*यशोधराको बुद्ध-वन्दना*

यशोधरादेवी रून थालेकी देखेर चारैतिर उभिरहेका परिचारिकाहरू पनि रोए। यस प्रकारले विरहमा डुबी रूँदा पनि भगवान्‌ले देवीलाई केही भनेनन्। देवी इच्छापूर्ण हुने गरी रोइसकेपछि आफैले धैर्य धारण गरी राजकुलिनानुसार अत्यन्तादरपूर्वक भगवान्‌लाई मान र आदर गरी एक कुनातिर गई उभिरहिन्।

त्यसपछि त्यहीं अगाडि उभिरहेकी यशोधरादेवीको चालचलनमा सदा सुप्रसन्न भएका शुद्धोदन महाराजले बुहारीको गुण वर्णन गर्दै भने— "भगवान्! मेरो बुहारी थिनो यशोधरादेवी साह्रै शीलवती छिन्।

*यशोधराको गुण वर्णन*

तपाईंले काषायवस्त्र धारण गर्नुभो भन्ने सुनेर थिनीले पनि त्यही दिनदेखिन् राजवस्त्र छाडी काषायवस्त्र धारण गरिन्। तपाईंले फूलमालादि धारण गर्न छोड्नुभो भन्ने सुनी थिनले पनि रत्नमालादि गहना लाउन छोड़िन्। तपाईंले अग्लो पलंगमा शयन गर्न छाड्नुभो भन्ने सुनी थिनले पनि भुइँमा नै बिछ्यौना लगाई सुत्ने गर्न थालिन्। तपाईं एक छाक मात्रै खानुहुन्छ भन्ने सुनेर थिनले पनि एकै छाक मात्र खान थालिन्। माइतबाट कति पटक बोलाउन पठाउँदा पनि गइनन्। शरीर एकातिर रहे पनि मन सँधै तपाईंमा लगाई, सदा तपाईं कै मात्र ध्यान गरी, दानपुण्य गर्दै गरीबहरूलाई खुवाई, अप्रमादी भई, मैत्री भावना राखी, राजभवनैमा बसी तपाईंको पद-गमन गरिरहेकी छिन्।"

यशोधराको यस्तो गुण वर्णन सुनी भगवान्‌ले भने—

" महाराज ! तपाइं जस्ताको आरक्षामा बसेर यशोधरादेवीले आफ्नो पतिव्रता शील पालन गर्नु आश्चर्यको कुरा होइन। यिनले अतीत कालमा किन्नर योनीमा जन्म लिंदा रक्षा गर्ने कोही नभएको हिमालय पर्वतमा बसेर पनि आफ्नो शील नबिगारी परिशुद्ध तरीकाले पतिव्रता–धर्म पालन गरेकी थिइन्। "

यति आज्ञा गरी भगवान् बुद्धले चन्दकिन्नर–जातकको कथा भनी धर्मोपदेश गरे।



## परिच्छेद चौथौं

भोलिपल्ट पनि भगवान् बुद्ध भोजनको निंति राजभवनमा नै आए। त्यस दिन राजभवनमा चहलपहल थियो। नन्दकुमारलाई विवाह गरी राज्याभिषेक दिने मंगलोत्सव थियो। भगवान् भोजन गरि सकेपछि मंगल–धर्मोपदेश गरी नन्दकुमारलाई आफ्नो पात्र समात्न लगाई दरबारबाट फर्के। भरेङ्निर पुगेपछि त यो पात्र भगवान्ले लिने होलान् भनी नन्दकुमार पछि–पछि लागे। तर त्यहाँ भगवान्ले पात्र लिएनन्। फेरि, तल वर्लेपछि ढोकानिर पुग्दा लिने होलान् भनी पछि-पछि लागे। त्यहाँ पनि लिएनन्। नन्दकुमार साह्रै दुविधामा परे। न भगवान्लाई पात्र लेऊ भन्नु, न आफू फर्कनु। असजिलो मान्दै, अलिपर पुगेपछि लिने होलान्, अझ अलि परमा लिने होलान् भन्दाभन्दै उनी भगवान् बुद्धको पछिपछि निग्रोधारामसम्म पुगे। निग्रोधाराम पुगेपछि भगवान्ले 'नन्द! प्रव्रजित हुन्छौ?' भनी सोद्धा 'हुँदिन' भन्न लाज मानी 'हुन्छु' भनी उत्तर दिए। यस प्रकारले नन्दकुमारलाई कपिलपुर पुगेको छैठौंदिनमा प्रव्रजित गराए।

*नन्दकुमारको प्रव्रज्या*

कपिलवस्तु पुगेको सातौं दिनमा पनि भगवान् भोजनको निंति राजभवनमा नै गए। त्यस दिन यशोधरादेवीले सातवर्षको राहुलकुमारलाई कुरा सिकाइन्– "बाबु! यी बीसहजार श्रमणहरूको बीचमा तारागणमध्ये चंद्रमा जस्ता, सुवर्ण वर्णका, बत्तीसै लक्षणले युक्त भएका महापुरूष तिम्रो पूज्य पिता हुनु-

*राहुलकुमारको प्रवज्या*

हुन्छ। वहाँ यस राजभवनमा पहिले रहनुहुंदा वहाँसित धनले परिपूर्ण चारवटा घड़ा थिए। वहाँ राजपाट गृहस्थ त्यागी जानु भएपछि ती चारैवटा घड़ा देखिएनन्। बाबुको संपत्तिमा छोराकै हक हुन्छ। तिमी गएर 'म चक्रवर्ती राजा हुनुपर्छ, त्यसको निंति मलाई धेरै धनको आवश्यकता पर्दछ, मलाई अंश देऊ' भनी माग।"

यति कुरा सिकाई राहुललाई भगवान्‌कहाँ पठाइन्। कुमारले पनि बाबुको अगिल्तिर गई बाल्यस्वभावले साह्रै हिस्सी लाग्दो गरी हाँस्दै आमाले सिकाएर पठाएको कुरा जम्मै भने। फेरि 'बा, तपाईंको छाँयाले मलाई साह्रै आनन्द दिंदोरहेछ!' भन्दै बाल्य-चंचलता देखाउंदै भगवान्‌संगै बस्न पुगे।

भगवान् भोजन गरिसकेपछि भुक्तानुमोदन गरी आसनबाट उठी राजभवनबाट बाहिर निस्के। राहुलकुमार पनि 'बा, मलाई अंश दिनोस्' भन्दै पछि-पछि लागे। कुमारलाई कसैले पनि 'फर्केर जाऊ' भनी भन्न हिम्मत गर्न सकेका होइनन्। सातवर्षका सानो कुमार निग्रोधारामसम्म नै पछि-पछि लागे। विहारमा पुगेपछि भगवान् बुद्धले राहुल कुमारलाई संसार-यात्रा मात्रै बढ्ने लौकिक धन दिने इच्छा नगरी, संसार-यात्रा समाप्त भई निर्वाण-सम्पत्ति प्राप्त हुने सप्तार्य्यधन दिने अभिलाषा गरी, आयुष्मान् सारिपुत्रलाई डाके। सारिपुत्र अगाडि आईपुगेपछि भगवान्‌ले राहुलकुमारलाई प्रव्रजित गर भनी आज्ञा दिए। भगवान्‌को आज्ञा पाई सारिपुत्र स्वयं उपाध्याय भई, मौग्दल्यायनलाई आचार्य्य बनाई, राहुलकुमारलाई प्रव्रजित गरे। यसरी सातौं दिनमा राहुलकुमारलाई पनि प्रव्रजित गर्ने कार्य्य सुसम्पन्न भयो।

यस प्रकारले राहुलकुमार पनि प्रव्रजित भए भन्ने सुनेका राजा शुद्धोदन साह्रै दुःखित हुँदै भगवान्कहाँ पुगे। नाति पनि प्रव्रजित भएकोमा साह्रै दुःखमानी भगवान्को समक्ष हृदयको वृतान्त सुनाई, मातापिताको अनुमतिविना कुनै बालक–बालिकालाई प्रव्रजित गराउन नपाइने वर मागी, राजा राजभवनतर्फ फर्के। त्यस बेलादेखिन् मातापिताका अनुमति-विना केटाकेटीहरू प्रव्रजित गर्न नपाइने नियम भगवान्ले बनाइदिए।

त्यसको भोलिपल्ट पनि भगवान् राजभवनमा भोजनको निति गए प्रात. भोजनोपरान्त परिषद्लाई धर्मोपदेश गरे।

*द्धोदन अनागामी भएका*

तदोपरान्त राजाले सुख दुःखको कुरा बताउँदै भगवान्लाई यस प्रकारले भने— "भन्ते! तपाईं उरूवेल वनमा तपस्या गरिरहनु भएको बेलामा, एकजना देवता आई, आकाश–मार्गबाट, नै आहार त्याग्नु भएको हुनाले बुद्धत्व प्राप्त गर्नु भन्दा अगाडि नै तपाईंको मरण भयो भनी, मलाई सुनाएका थिए।"

"विश्वास गर्नु भो त, महाराज?"

"गरिन।"

"महाराज! धर्मपाल महाराजको समयमा पनि मेरो मृत्यु भैसक्यो भनी तपाईंकै अगिल्तिर मेरो हाड भनी देखाउन ल्याउँदा पनि तपाईं पत्याउनु भएको थिएन।"–भन्दै भगवान्ले महाधम्मपाल जातकको कथा बताउँदै धर्मोपदेश गरे। धर्मोपदेश गरिसकेपछि राजा शुद्धोदन अनागामी-फलमा सुप्रतिस्थित भए।

यस प्रकारले स्वदेशमा आएकै छैठौं दिनमा भगवान् बुद्धले भाइ नन्दकुमारलाई प्रव्रजित गराए। सातौं दिनमा छोरा राहुलकुमारलाई प्रव्रजित गरे। सौतेनी आमा प्रजापती गौतमी-लाई स्रोतापत्ती मार्ग-फलमा र पिता शुद्धोदनलाई अनागामी फलमा सुप्रतिस्थित गराई पुनः कपिलवस्तु छाडी राजगृह-तिर नै फर्के।

त्यस बखतमा कोशल राज्यमा श्रावस्ती नामक नगरमा साह्रै धनी अनाथपिण्डिक नाम गरेका एकजना सेठ थिए। उनको राजगृह नगरमा अति विश्वासी साथी एकजना थियो।

*अनाथपिण्डकलाई बुद्ध-दर्शन*

एकदिन त्यो महाजन आफ्नो साथीलाई भेट्न भनी एकसय गाडाभरि चीज-वस्तु राखी श्रावस्तीबाट राजगृहतर्फ हिंडे। भगवान् बुद्ध राजगृहमा आएका छन् भन्ने सुनी अनाथपिण्डिकलाई भगवान् दर्शन गर्ने प्रवल इच्छा भयो। बिहान सबेरै उठी भगवान् भएका ठाउँमा पुगे। अनि भगवान्लाई सादर प्रणाम गरी एकछेउमा बसी धर्मोपदेश सुनि-रहे। धर्मोपदेश सुनिरहेका महाजनलाई त्यहीं स्रोतापत्ति-फल प्राप्त भयो। तदोपरान्त भगवान्लाई श्रावस्ती नगरमा आउ-नुहोस्' भनी प्रार्थना गरे। भगवान्ले पनि मौन-संमति दिए।

भगवान्लाई श्रावस्ती नगरमा आउने निमंत्रणा गरी फर्केका साहू अनाथपिंडिकले एक-एक योजनाको अन्तर पारी

*अनाथपिण्डकको जेतवन विहार दान*

पैंतालीस योजनको मार्गमा पैंतालीसवटा विहार, श्रावस्तीसम्म, बनाइदिए। एक-एक विहार बनाउन एक-एक लाख, जम्मा पैंतालीस लाख, खर्च लागेको थियो।

अट्ठारकरोड गिरी जेतवन उद्यान पनि किने । त्यस उद्यानमा भगवान् प्रमुख अस्सीजना महाश्रावकहरूको निंति समेत विहार बनाउन लगाए । चंक्रमणस्थान, दिवास्थान, रात्रीस्थान, स्नानगृह, धर्मशाला, सभागृह, इनार तथा बगैंचा आदि अनेक स्थानहरू पनि सुन्दराकारले बनाउन लगाए। विहार बनाउनमा जम्मा अठ्ठार करोड रुपिया खर्च भएको थियो। विहार–निर्माण कार्य्य सकिएपछि महाजनले भगवान्कहाँ खबर पठाए। भगवान् पनि खबर पाउनासाथ हजारौं भिक्षुहरू साथमा लिई राजगृहबाट पैंतालीस योजन मार्ग तय गरी श्रावस्ती आइपुगे।

भगवान् श्रावस्ती आइपुगे भन्ने खबर सुनेका अनाथपिण्डिकले आफ्नो छोरालाई वस्त्र अलंकारादिले सिंगारी, पाँचसय अरु कुमारहरूको साथमा फूलमाला ध्वजापताकादि समात्न लगाई, तिनीहरूका पछिपछि अरू पाँचसय कुमारीहरू-सहित महासुभद्रा र चूलसुभद्रा नामक आफ्ना दुइजना छोरीहरूलाई पनि वस्त्रालंकारादिले सुसज्जित गराई भगवानलाई लिन पठाए । त्यसपछि आफ्नो गृहिणीलाई पनि त्यस्तै सिंगार्न लगाई पाँचसय स्त्रीहरूको साथमा पठाए। आफूचाहिं सबभन्दा पछाडि पाँचसय उपासकहरूसहित शुद्ध सफेद वस्त्र लगाई भगवान्लाई लिन गए। बीच बाटोमा भगवान् भेट भयो। पूजा मान्यादिले स्वागत सत्कार गरी भगवान्लाई जेतवन विहारमा ल्याए। त्यहाँ पुगेपछि अनाथपिण्डिकले सुवर्ण–कलशबाट जलधारा बहाई जेतवन विहार भगवानलाई दान दिए। भगवान्ले 'दानमध्ये विहार–दान श्रेष्ठोत्तम दान हो'— भनी समयोचित धर्मोपदेश गरे।

भगवान् बुद्धको श्रावस्तीमा पदार्पण भएदेखिन् महिनौं दिन-सम्म अनाथपिण्डिकले विहारोत्सव गरी अठ्ठार करोड धन खर्च गरे। यस प्रकारले साहू अनाथपिण्डिकले जेतवन विहारको निति चवन्न करोड द्रव्य खर्च गरेका थिए।

महाकारुणिक भगवान् बुद्ध जेतवन विहारमा नौमहीना बसी फेरि राजगृह नगरतर्फ फर्के। त्यहाँबाट पनि घुम्दैफिर्दै अनोमा नदीको किनारमा स्थित मल्ल राजाहरूका सानो देशमा अनुप्रिय नामक आम्रवनमा पुगे।

उता कपिलवस्तुमा महाराज शुद्धोदनले सबै शाक्य परिवारहरूलाई एकत्रित गरेर भने— 'राजन् हो! सिद्धार्थ-कुमार राजभवनैमा बसी राजपाट सह्मालेर बसेको भए आज उनी चक्रवर्ती राजा भैसक्ने थिए। हामी जम्मै उनका परिचारिका भैसक्ने थियौं। तर आज उनी यो सुखऐश्वर्य जम्मै त्यागी जगत हितार्थ सर्वज्ञ बुद्ध हुन पुगे। यस कुरामा तिमीहरू पनि सबैले विचार गरी आफ्ना-आफ्ना कुमारहरूलाई भगवान्कहाँ लगी प्रव्रजित गराउनु साह्रै उत्तम छ।"

*उपाली नाउको प्रव्रज्या*

राजाको यस्तो प्रीति वाक्य सुनेका शाक्यकुमारहरू एकै पटकमा एकहजार जवान भगवान्कहाँ गई प्रव्रजित भए। तर त्यसमध्ये महानामादि शाक्यकुलबाट कुनै पनि प्रव्रजित हुन गएन। एकदिन भद्दिय शाक्य राजा, अनुरुद्ध, आनन्द, भगु, किम्बिल तथा देवदत्तादि छः जना शाक्यहरू आफ्ना आफ्ना सैन्यलाई बन बिहार गरी सकेपछि सकल सैन्यलाई फर्काइ पठाई उपालि नामक नाउ एकजनालाई मात्रै साथमा

यस किसिमले शान्ति-नायक शाक्यमुनीन्द्र बुद्ध भगवान्‌ले, ठूलो-सानो, धनी-गरीब, छूत-अछूत भन्ने क्षुद्र बिचारको कुनै भेदभाव नराखी सकल मानव-समाज-उपर एकै प्रकारको मैत्रीभाव राखी लाखौं प्रव्रज्यापेक्षहरुलाई प्रव्रजित गरे। मानव-समाज-हितको निति देशविदेश घुमी उपदेश दिंदै मोक्ष गवेषी अनेक विद्वानहरुलाई शिक्षा तथा विद्या दान गरे। करोडौं नरनारीहरुलाई दान, शील, भावना, मैत्री तथा प्रज्ञाको उपदेश दिई स्वर्ग र मोक्षको मार्ग देखाइदिए। स्त्री तथा पुरुषको पनि अलग्ग अलग्ग संघ बनाइदिए। उभयपक्षीहरुलाई समानाधिकार दिए। बुद्धिलाई प्रधान स्थानमा राखे। अन्धविश्वासले बुध्दको शिक्षा तथा धर्ममा कही स्थान पाएन।

*लोकहित*

× ×    × ×    × ×

बुद्धत्व प्राप्त गरिसकेपछि भगवान्‌को प्रथम वर्षावास ऋषिपतन मृगदावनमा बितेको थियो। द्वितीय, तृतीय तथा चतुर्थ वर्षावास चाहिं वैशाली-नगर कुटागार-विहारमा बित्यो।

## परिच्छेद पन्द्रहौं

महाराज शुद्धोदन पनि अब सा‍र्है बूढा भैसकेका थिए। एकदिन राजभवनमा श्वेतच्छत्रको मनि बसेर ध्यान गर्न लागेका थिए। ध्यान बढाउँदा बढाउँदै अर्हत् भई परिनिर्वाण पनि भए। महाराजको परलोक गमन भएपछि प्रजापती गौतमीको मनमा सा‍र्है विरक्ति उत्पन्न भयो। एकजना नाउ बोलाउन पठाई आफ्नो त्यत्तिको राम्रो केश मुण्डन गर्न लगाइन्। अनि काषायवस्त्र अगाई पाँचसय शाक्यस्त्रीहरु साथमा लिई वैशालीनगरतिर हिंडिन्। महारानी गौतमीले पहिले पनि एकपटक भगवान निग्रोधारामममा छंदाखेरि प्रव्रज्या हुन मागेकी थिइन्। तर, भगवान्‌ले 'प्रव्रजित हुने इच्छा नगर' भनी तीन पटकसम्म पनि राकेका थिए। तस्मात्, आज गौतमी स्वयं आफैले शिरमुण्डन गरी काषायवस्त्र धारण गरी बुद्धको समक्ष प्रव्रजित हुनको निंति आइपुगिन।

*गौतमीको गृहत्याग*

प्रजापती गौतमी कपिलपुरदेखिन् वैशालीनगरसम्म पैदल नै गइन्। त्यहाँ भगवान् बसिरहेका कुटागार विहारको ढोकाअगिल्तिर गई आँखाभरि आंशु गरी बसिरहिन्। त्यस्तो सुख भोगमा बसिरहेकी, शिरमुण्डन गरी, काषायवस्त्र धारण गरी, महारानी जस्ता मानिस पैदलै हिंडेर आई, अश्रुमुखी भई ढोकाको अगिल्तिर बसेर रोइ-

*प्रजापती प्रव्रज्या*

रहेकी वृद्धा गौतमीलाई देखेर आयुष्मान् आनन्दले 'किन रोइ-रहनु भएको ?' भनेर सोधे।

गौतमीले भनिन्– "म यस्ती बूढी भैसकेकी छु, भगवान्ले मलाई आजसम्म पनि प्रव्रजित गर्नु भएन। त्यसैकारण दुःख-मानी रोइरहेको हुँ।"

गौतमीको यस्तो उत्तर पाई आयुष्मान् आनन्द भित्र गई भगवान्लाई सबै कुरा बताउँदै भने– "स्त्रीहरूलाई प्रव्रजित गर्नु भएन भनी बाहिर गौतमी रोइरहनु भएको छ। वहाँलाई पनि प्रव्रजित हुने आज्ञा दिनुहोस्।"

"स्त्री जातिलाई प्रव्रजित गर्न कुरामा तिमी जिद्दी नगर" भनी तीन–तीन पटकसम्म भगवान्ले भन्नु हुँदा पनि आयुष्मान् आनन्दले भगवान्सँग यस्तो प्रश्न गरे– "भन्ते! तपाईंको शासनमा प्रव्रजित भएका स्त्रीहरूले स्रोतापत्यादि मार्ग–फल साक्षात्कार गरी दुःखबाट छुटकारा पाउन सक्तैनन्?"

"सक्छन्, आनन्द!"

"भन्ते! त्यसो भए महारानी गौतमीलाई पनि प्रव्रजित गर्नु भयो भने वहांको जीवन सफल हुनेछ। फेरि, वहाँ तपाईं-का उपकारक पनि हुनुहुन्छ। वहांले तपाईंको ठूलो उपकार गर्नु भएको थियो। त्यो बाहेक वहाँ तपाईंको आमा पनि हुनुहुन्छ। मायादेवीको स्वर्गवास भएपछि वहांले, आफ्नो छोरा नन्द धाइमाहरूलाई दिई, तपाईंलाई आफ्नो स्तनको दूध खुवाई पालन गरेकी थिइन्। तपाईंको मलमूत्रादि सफा गरेकी थिइन्। तपाईं राजमहलबाट निस्कनु भएदेखिन् तपाईंलाई संझेर संधै रोइरहने त्यस्ती बूढी क्षीरदाता आमाको कल्याण गर्नुहोस्।"

आयुष्मान् आनन्दको यस्तो कुरा सुनी भगवान्‌ले आज्ञा गरे— "आनन्द ! प्रजापती गौतमीले यी आठवटा कठीन नियमहरू पालन गर्न स्वीकार गर्छिन् भने उनको निति त्यही नियम प्रव्रज्या र उपसम्पदा हुनेछन्। ती आठवटा नियम यी नै हुन्—

( १ ) उपसम्पदा प्राप्त गरेकी स्त्रीले, सयवर्ष नै पुगिसकेकी बूढी भए पनि, आज मात्रै उपसम्पदा प्राप्त गरेको भिक्षुलाई अभिवादन, प्रत्युपस्थान, नमस्कार तथा मान–सत्कारादि गर्ने आचरण पर्दछ।

( २ ) भिक्षुहरूको आश्रय नभएको आवासमा वर्षावास कदापि गर्नु हुंदैन।

( ३ ) हरेक दोस्रो हप्तामा भिक्षुहरूकहाँ गई, यो कुन उपोसथ हो, र भिक्षुणीहरूलाई उपदेश दिने कोही भिक्षु छन् कि छैनन् भनी सोध्ने काम गर्नु पर्दछ।

( ४ ) वर्षावास सिद्धिनासाथ भिक्षुभिक्षुणी–संघमा 'दृष्ट श्रुत 'परिशंकित' नामक तीन प्रकारको पवारणा गर्नु पर्दछ।

( ५ ) नियम उल्लंघन गर्ने भिक्षुणीले दुवै संघ–सभामा एकपक्षसम्म मानात्मता पालन गर्नु पर्दछ।

( ६ ) दुइ वर्षसम्म छःवटा शिक्षा राम्ररी आचरण गरिसकेकी शिक्षमाणविकाले दुवै संघसित उपसंपदा मागिलिनु पर्दछ।

( ७ ) कुनै प्रकारले पनि भिक्षुहरूको निन्दा नगर्ने र तिनीहरूप्रति अपशब्द प्रयोग नगर्ने व्रत लिनु पर्दछ।

( ८ ) भिक्षुहरूप्रति भिक्षुणीहरूले आफ्नो मुख बन्द गर्नु पर्दछ; र भिक्षुणीहरूप्रति भिक्षुहरूलाई संधै मुख खोल्ने अधिकार दिनु पर्दछ।

यो आठवटा नियममध्ये कुनै एउटा नियम पनि भिक्षुणीले उल्लंघन गर्नु हुन्न। उक्त आठै नियमप्रति आदर सत्कार भक्ति राखी जीवनभर पालन गर्नु पर्दछ।

आनन्द ! प्रजापती गौतमीले यी आठवटा कठीन नियमहरू पालन गर्ने स्वीकार गर्दछिन् भने तिनको निति प्रव्रज्या र उपसंपदा त्यही भयो।"

भगवान् बुद्धको यस्तो आज्ञा सुनी आयुष्मान् आनन्द गौतमीकहाँ गई सबै वृतान्त सुनाए। त्यस बेला गौतमीले भनिन्— "आनन्द ! सौन्दर्यको पूजारी कुनै युवक तथा युवती-लाई सुगन्धयुक्त फूलमाला दिंदा जसरी आनन्द मानेर त्यसले दुवै हात थापी लिई गलामा लाउँछ अथवा जूरोको शोभा बढाउछ। त्यस्तै ती आठवटा कठीन नियमहरू म अत्यन्त गौरव आदरपूर्वक सहर्ष शिरथापी लिन्छु। जीवनभर त्यसमध्ये कुनै नियम पनि उल्लंघन नगरी पालन गर्नेछु।

अनिपछि आयुष्मान् आनन्दले भगवान्को अगिल्तिर गई 'गौतमीले ती आठवटा नियम आदरपूर्वक शिरथापी लिइन्' भनी बताए। यो कुरा सुनी भगवान्ले भने— "आनन्द ! स्त्रीजाति-लाई तथागतको शासनमा प्रव्रज्या प्राप्त नभएको भए यो श्रेष्ठ ब्रह्मचर्य-शासन हजार वर्षसम्म चिरस्थायी हुने थियो। यस शासनमा स्त्रीजाति-लाई प्रव्रज्या प्राप्त भएदेखिन् अब अचिरस्थायी हुने भयो। अब यो शासन पाँचसय वर्षसम्मलाई मात्र हुने भयो। आनन्द ! जसरी लोग्नेमान्छे नभएको तर स्वास्नीमान्छे मात्रै भएको घरमा चोरले सजीलैसित हमला गर्छ, त्यस्तै स्वास्नीमान्छे

*शासनको अचिरस्थायी*

प्रव्रजित हुने स्थान भएको शासन अचिरस्थायी हुन्छ।

"आनन्द! किरालागेको धानको बोट जसरी चाँडै ढल्छ, त्यसरी नै स्वास्नीमान्छे प्रव्रजित हुने स्थान भएको शासन चाँडै नाश हुन्छ।

"आनन्द! जसरी एउटा बलवान् मानिसले पोखरीको पानी बाहिर नजाओस् भनी पोखरीको चारैतिर परखाल बनाइदिन्छ, त्यसरी नै मैले भिक्षुणीहरूलाई जीवनभर उल्लंघन गर्न नहुने आठवटा कठीन नियमहरू बनाइदिएको छु।"

यस प्रकारले भिक्षुणी-संघ प्रतिस्थित हुनासाथ हजारौंको संख्यामा स्त्रीहरू गृहत्याग गरी प्रव्रजित भई शील समाधि पुऱ्याई अर्हत् भए।

एकदिन भिक्षुणी प्रजापती गौतमी आयुष्मान् आनन्द-कहाँ गई भनिन्— "भन्ते! भगवान्सित एउटा वर माग्न चाहन्छु। भगवान्ले भिक्षु र भिक्षुणीहरूको

*नमस्कार नगर्ने* बीचमा परस्पर मानसूचक वन्दना गर्ने

नियम बनाइदिनु भए अत्युत्तम हुने थियो।" आनन्दले गौतमीले भनेको कुरा भगवान्लाई सुनाए पछि भगवान्ले भने— "आनन्द! तथागतले स्त्रीजातिलाई वन्दना गर्ने तथा आसनबाट उठी गौरव सत्कार गरी मान गर्ने नियम कहिल्यै बनाउँदैन। दुराख्यात अन्य तीर्थकहरूको धर्मविनिमयमा पनि स्त्रीजातिलाई मानसत्कार वन्दनादि गर्ने चलन छैन भनेदेखिन् कसरी तथागतले यस्तो स्वाख्यात धर्म-विनिमयमा स्त्रीजातिलाई वन्दना मानादि गर्ने अनुमति दिन्छ!"

यति भनेपछि भगवान्‌ले त्यही कारणमा त्यही विषयमा भिक्षुवर्गलाई उपदेश गर्दै भने — "भिक्षुगण! स्त्रीजातिलाई अभिवादन, प्रत्युप्रस्थान, अञ्जलिकर्म तथा मानसत्कारादि गर्नु पर्दैन, जसले गर्दछ त्यसलाई दुष्कृतापत्ति हुनेछ। *"

फेरि एकदिन भिक्षुणी प्रजापती गौतमी भगवान्‌कहाँ गई अभिवादन गरी यसरी प्रार्थना गरिन् — "भन्ते! मलाई तपाईंले यस्तो किसिमको एउटा संक्षिप्त धर्मोपदेश गर्नु होस्, जुन धर्मोपदेश सुनी म एक शून्यागारमा पुगी अप्रमादी हुन सकूं।"

*तथागतको धर्म*

गौतमीको यस्तो प्रार्थना सुनी भगवान्‌ले आज्ञा गरे - "गौतमी! जुन धर्मले वैराग बढाउनुको सट्टा संयोग बढाउँछ, जुन धर्मले असस्कार बढाउनुको सट्टा संस्कार बढाउँछ, जुन धर्मले लोभ, असन्तोष, जनाकीर्ण र आलस्य मात्रै बढाउँछ, त्यो धर्म 'न धर्म नै हो, न विनय नै हो, न तथागतको शासन नै हो' भनो तिमीले निश्चय रूपले जान। जुन धर्मले राग घटाउँछ, जुन धर्मले वैराग, वियोग, असंस्कार, अलोभ, सन्तोष, एकान्तता, वार्य तथा सु-भरता बढाउँछ, त्यो धर्म 'धर्म हो, विनय हो, तथागतको शासन हो' भनी तिमीले निश्चय रूपले जानी विश्वास गर।"

तदुउपरान्त एकदिन कपिलवस्तुमा राजभवनमा एक्लै बसिरहेकी यशोधरादेवीको मनमा यस्तो बिचार उत्पन्न भयो—

* न भिक्खवे मातुगामस्स. अभिवादनं, पच्चुपट्ठानं अञ्जलीकम्मं, सामीचिकम्मं कातब्बं, यो करेय्य आपत्ति दुक्कटस्स। ( चुल्लवग्ग )

"मेरा स्वामी राजपाट जम्मै त्यागी बुद्ध हुनुभो। पुत्र राहुल पनि प्रब्रजित भएर गैसक्यो। राजमहलमा बसिरहनु भएकी सासू प्रजापती गौतमी पनि सय्यौं आइमाईहरूसहित प्रब्रजित हुन जानुभो। म मात्रै एक्लै यहाँ श्मसानमा बसे झैं बसी अभिमानी भई रहनु किन! प्रब्रजित भएर जान पाए भने छोराको मुख पनि सँधै देख्न पाइनेछ, भगवान्को दर्शन पनि प्रतिदिन प्राप्त हुनेछ।"

*यशोधराको प्रब्रज्या*

यस्तो बिचार गरी बिरक्त भई सय्यौं परिचारिकाहरू साथमा लिई यशोधरादेवी, भिक्षुणी–आश्रममा गई, प्रब्रजित भइन्। प्रब्रजित भैसकेपछि उपाध्यायी र आचार्य्याहरूको संगमा राहुल र भगवान्को दर्शन प्रतिदिन गर्न पाइने गरी श्रावस्तीमा गई बसिन्।

यस प्रकारले भगवान् बुद्धको शासनमा भगवान्का सकल परिवार प्रब्रजित भए। ज्ञात्यार्थचर्य्या पूर्ण गरी भगवान्ले बन्धुबर्ग सबैलाई जन्म-मरणको बन्धनबाट छुटकारा पाइने शान्त प्रणीतयुक्त निर्वाण पद प्राप्त गराए।

---

# परिच्छेद सोह्रौं

पाँचौं वर्षाकाल वैशालीनगरको कुटागार शालामा व्यतीत गरिसकेपछि त्यहाँबाट शान्तिनायक अशरणका शरणागत महामुनि भगवान् बुद्धले लोकहित

*छैठौंदेखि एकाइसौं वर्षावाससम्म*

कार्य्य प्रारम्भ गर्दै नगर–नगर, ग्राम–ग्राम भ्रमण गर्दै, धर्मोपदेश गर्दै, छैठौं वर्षावास मंकुल नामक पर्वतमा गएर बिताए। सातौं वर्षावास चाहिं तावतिंस देवलोकमा, आठौं भग्गदेशको सुंसुर मारगिरि नगरको भेसकला नामक वनमा, नवौं कौशाम्बी नगरको घोषिराममा, दसौं पारिलेय्यक वनमा, एघारौं मगध राज्यको दक्षिणगिरिको एकनाला नामक ब्राह्मण–ग्राममा, बाह्रौं वेरञ्जा नगरमा, तेन्हौं चालिय पर्वतमा, चोधौं श्रावस्ती नगरको जेतवन विहारमा, पन्ध्रौं कपिलवस्तुको निग्रोधाराममा, सोह्रौं आलवक देशमा, सत्रौं राजगृहको वेणुवनाराम विहारमा, अठारौं चालिय पर्वतमा, उन्नाइसौं पनि त्यहीं, बीसौं पुनः राजगृहमा नै व्यतीत गरी श्रावस्तीमा फर्के। एकाइसौं वर्षाकाल चाहिं त्यहीं जेतवन महाविहारमा बिताए।

त्यस बेला श्रावस्ती नगरमा सार्है धनो सेठ एकजना थिए। तिनको नाम मृगार थियो। मृगारको पूर्णबर्धन नामक एउटा छोरा पनि थिए। मृगारले छोरा तरूनो भएपछि शाकेत देशमा बस्ने धनञ्जय नाम गरेका

*विशाखा उपासिका*

एकजना साहूकी छोरीसित उनको विवाह गरिदिए। विशाखा नाम गरेकी तीं दुलही,

भगवान्‌की उपासिका थिईन्। उनी आफ्नो हजुरबा मेन्दकको घर अंगदेशमा भद्दिय नामक नगरमा छँदाखेरि प्रथमबार भगवान् बुद्धको उपदेश सुनी सातवर्षको उमेरमा नै स्रोतापत्ति–फल प्राप्त गरी बुद्ध-शासनमा सुप्रतिष्ठ भैसकेकी थिइन्।

एकदिन उपाशिका विशाखा पाँचसय साथीहरूसहित एउटी सखीकहाँ निमन्त्रणामा गएकी थिइन। त्यहाँबाट फर्कंदा जेतवन–विहारमा गई भगवान्‌को दर्शन गरेर मात्रै घर फर्कन्छु भन्ने विचार गरी जेतबनतिर लागिन्। बीच बाटोमा पुग्दा 'भगवान्‌को अगिल्तिर यस्तो बहुमूल्य गहना लगाई जानु उचित पर्दैन भनी गहना जम्मै फुकाली पोका पारी एउटी दासीलाई बोकाइन् र साधारण वस्त्र लगाई विहारभित्र पसिन्। भगवान्‌को अगिल्तिर पुगी आदर अभिवादन गरी एक स्थानमा बसिन्। धर्मोपदेश सुनि–बरि सकेपछि सुप्पिया आदि उपासिकाहरूसहित भिक्षुहरूसित कुशल वार्ता सोध्दै हरेक आवासमा गई सुख दुःखको कुरा गरी बरतिर फर्किन्। बीचबाटोमा पुगेपछि विशाखाले दासीसित गहना मागिन्। 'आच्चे! गहनाको पोका त विहारैमा बिर्सेछु।' भनी दासी झस्केर विहारतर्फ दौडन खोजिन्। अनि, विशाखाले दासीलाइ रोक्दै भनिन्—"दासी, त्यो गहना आनन्द भन्तेले सञ्चाएर राखिदिराख्नु भएको रहेछ भने लिएर नआ। वहाँले छोइसक्नु भएको गहना संघलाई नै अर्पण गर्दछु।"

*विशाखको विहारदान*

दासी हतारपत्त दगुर्दै गई हेर्छेत, गहनाको पोका आनन्द भन्तेले हेर्ली कस्को हो किन आयला भनी हिफाजतसाथ भरेक-

मन्दिर सध्याँ राखिदिएका रहेछन्। यो देखी दासी फर्केर गई सो कुरा विशाखालाई भनी। अनि विशाखाले "त्यो गहनाको पोका त्यहीँ राखेर म्हाँहरूको कुनै काम आउने होइन, बरू त्यो बेचेर संघलाई प्रयोजन हुने कुनै वस्तु किनीदिनु उचित होला' भन्ने बिचार गरी फेरि दासीलाई त्यो गहनाको पोका लिन पठाइन्।

गहनाको पोका ल्याइसकेपछि उपाशिकाले श्रावस्तीका सुनार तथा ब्यापारीहरूलाई डाकेर पठाई त्यसको मोल राख्न लगाइन्। तिनीहरूले त्यसको मोल नौकरोड राखे। अनि एउटा मानिसलाई त्यो गहनाको पोका दिई श्रावस्ती नगरमा बेच्न पठाइन्। तर, त्यत्तिको मोल पर्ने गहना किन्ने त्यस नगरमा कुनै धनी निस्केन। गहना बेच्न नसकी फिर्ता ल्यायो। विशाखा आफैले नौकरोड तिरी त्यो गहना किनेर लिइन्।

त्यसपछि नौकरोड दाम बोकी उपासिका विशाखा भगवान् बुद्धकहाँ गई निवेदन गरिन्—"भन्ते! मले संघलाई परित्याग गरेको गहनाको दाम यति छ, ग्रहण गर्नु होस्।"

भगवानले आज्ञा गरे— "विशाखा! आजकल यहाँ श्रावस्तीमा भिक्षुहरू धेरै छन्। यस नगरको पूर्वतिर एउटा विहार भए बेस हुनेछ।"

"हवस्, म यस दामबाट विहारै बनाइदिन्छु।"— भनो विशाखा फर्किन्। अनि विशाखाले श्रावस्तीको पूर्वतिर नौकरोड दाम तिरी विहार बनाउन एक टुक्रा जमीन किनिन्। त्यहाँ तिनले, पाँच-पाँच सय कोठा भएका, दुइतल्ले एउटा विशाल विहार बनाउन लगाइन्।

त्यसपछि, एकदिन भगवान् बुद्ध बिहान सबेरै ध्यानमा बसी लोकतर्फका बिचार गरिरहेका थिए। त्यसबेला भद्रिय नगरमा भद्रिय नै नाम गरेका एकजना साहूको कुलमा उत्पन्न भएको छोरोको धर्मावबोध गर्न सक्ने शक्ति छ भन्ने कुरा भगवान्‌ले थाह पाए। यस्तो कुशल हेतु जानी भगवान्‌ले भिक्षु-संघ साथमा लिई श्रावस्तीबाट प्रस्थान गरे।

भगवान् श्रावस्तीबाट हिंड्‌न आँटे भन्ने खबर सुनेर विशाखा भगवान्‌कहाँ दगुद गई भनिन्— "भन्ते! तपाईं भ्रमणमा जान लाग्नु भएको हो कि?"

भगवान्‌ले भने— "हो विशाखा।"

निश्चय नै भगवान् जान आँटेका हुन् भन्ने बुझी विशाखाले भनिन्— "भन्ते! यतिका धन खर्च गरी विहार बनाउन लागिरहेको छ, तपाईं जानुभो भने यो काम कसरी पूर्ण होला? बरू, कुनै एउटा भिक्षुलाई नियुक्त गरी जानु भएमा उत्तम होलाकि!"

भगवान्‌ले भने— "त्यसो भए कुनै एकजना भिक्षुको पात्र मागी लिनू।"

यद्यपि विशाखाको आयुष्मान् आनन्दप्रति विशेष भक्ति थियो, तापनि विहार बनाउने काममा आयुष्मान् मौद्गल्यायनको ऋद्धिद्वारा धेरै उपकार हुन सक्ने बुझी उनैको पात्र मागिन्। उनले विशाखालाई पात्र दिंदै भगवानको मुख हेरे। उनको आशय बुझी भगवान्‌ले भने— "मौद्गल्यायन! आफ्नो परिवारलाई लिई तिमी फर्क।"

भगवान्‌को आज्ञा पाई आयुष्मान् मौद्गल्यायन आफ्नो परिवारसहित श्रावस्तीमा नै बसे।

भगवान् श्रावस्तीबाट प्रस्थान गरी नौ महीना जति देश भ्रमण गरी प्राणीहरूलाई धर्मअमृत-पान गराउँदै पुनः श्रावस्तीमा नै फर्के। विशाखाद्वारा निर्मित विहार पनि पूर्ण भैसकेको थियो। त्यसकारण उपासिका विशाखाले भगवान् प्रमुख भिक्षुसंघलाई त्यस विहारमा वर्षावास गराई अत्यालंकारके महोत्सव मनाइन्। चार महीनासम्म उत्सव गर्दा विशाखाको अर्को नौकरोड धन खर्च भएको थियो। जमीन किन्दा नौ करोड, विहार बनाउँदा नौकरोड, उत्सव गर्दा नौकरोड, जम्मा सत्ताइसकरोड दाम खर्च गरी भगवान् प्रमुख भिक्षु-संघलाई विशाखाले त्यो नवनिर्मित विहार दान गरिन्। पूर्व दिशातिर रहेको हुनाले त्यस विहारको नाम पनि 'पूर्वाराम' भन्ने रह्यो।

विशाखाको त्यस नवनिर्मित विहारमा भगवान्ले बाइसौं वर्षावास बिताए। चवालिसौं वर्षावाससम्म पनि भग-वान् श्रावस्तीमा नै बसे।

महाकारुणिक तथागत बुद्धले चवालीसवर्षसम्म पराथ-चर्य्या पालन गरी देशविदेश भ्रमण गर्दै देवसहित सकल मनुष्यहरूलाई अमृतपान गराउँदै हिंडेका थिए। यति समय भित्रमा उनको शासनमा, उनको त्रिविध तथा

*समर्थ भिक्षुगण*

नवांग बुद्धशासन बुझेका, ग्रन्थी-कारण फुकाउन सक्ने सामर्थ्य भएका, विस्तृत अर्थलाई संक्षिप्त र संक्षिप्त अर्थलाई विस्तृत पारी सहेतुक-सप्रमा-णिक गरी बुझाउन सामर्थ्यभएका एकसेएक समर्थवान् भिक्षुहरू धेरै संख्यामा भए। उपासिकाहरूमा पनि त्यस्ता सामर्थ्य भएका स्त्रीहरूको संख्या कम भएन।

चिर-रात्रज्ञहरूमा [illegible] कौण्डन्य महास्थविर, प्रज्ञावान्हरूमा श्रेष्ठ [illegible]रिपुत्र [illegible]स्थविर, र ऋद्धिमान्हरूमा अग्रगण्य [illegible]मौद्गल्या[illegible] म[illegible] थिए। धुतङ्ग[illegible]हरूमा श्रेष्ठ काश्यप म[illegible]स्थवि[illegible] [illegible] दिव्य चक्षु लाभ गरेकाहरूमा अग्रगण्य अनुरूद्ध महास्थविर नै थिए। उच्च कुलिनहरूमा त अग्रगण्य भद्रिय महास्थविर थिए। मधुर स्वरहरूमा अग्र लकुण्ठक भद्दिय महास्थविर, सिंहनाद गर्नेहरूमा पि[illegible]डोल भारद्वाज महास्थविर अग्र थिए। धर्मकथिकहरूमा प[illegible] महास्थविर, संक्षिप्त कुरा बुझी विस्तार [illegible]वक उपदेश गर्नेहरूमा महाकात्यायन महास्थविर, मनोमय ऋ[illegible] लाभीहरूमा चुल्लपन्थ महास्थविर नै अग्र थिए। अरूप ध्यानीहरूमा अग्र महापन्थ महास्थविर, निक्लेश विहारीहरूमा श्रेष्ठ सुभूति महास्थविर, जङ्गलवासीहरूमा रेवत महास्थविर अग्रगण्य थिए। ध्यानीहरूमा अग्रगण्य कंखारेवत महास्थविर थिए। वीर्यवान्हरूमा अग्रगण्य सोणो कोलिविसो महास्थविर, कल्याण वार्ता गर्नेहरूमा अग्र सोणो कुटिकण्णी महास्थविर, लाभीहरूमा अग्र सीवलि महास्थविर, श्रद्धाधिकहरूमा अग्र वक्कली महास्थविर, शिक्षाकामीहरूमा अग्र राहुल महास्थविर, श्रद्धाले प्रव्रजित भएकाहरूमा अग्र रठ्ठपाल महास्थविर, प्रतिभाण प्राप्त गरेकाहरूमा अग्र वंगीस महास्थविर, देवगणहरूका मनपरेकाहरूना अग्र पिलिन्दगोच्छ महास्थविर, तुरुन्त अभिज्ञालाभीहरूमा अग्र बाहिय दारुचीरिय महास्थविर थिए। व्यक्त कथिकहरूमा श्रेष्ठ कुमारकाश्यप महास्थविर तथा प्रतिसंभिदा लाभीहरूमा श्रेष्ठ महाकोठ्ठित महास्थविर थिए। यी बाहेक बहुश्रुतहरूमा, स्मृतिवान्हरूमा बुध्दिवान्हरूमा तथा उपस्थापकहरूमा अग्रगण्य आनन्द महास्थविर नै

थिए। महापरिवार प्राप्त भएकाहरूमा अग्र उरुवेल काश्यप महास्थविर तथा कुलप्रसन्न कर्ताहरूमा अग्र कालुदायि महास्थविर थिए। निरोगीहरूमा अग्र बक्कुल महास्थविर, पूर्वानुस्मृतिज्ञान भएकाहरूमा अग्र सोभित महास्थविर तथा विनयधरहरूमा अग्र उपालि महास्थविर थिए। यस प्रकारले बुद्धशासन अन्तर्गत धेरै समर्थवान् भिक्षुहरू भए।

भिक्षुणीहरूमा पनि समर्थवान् स्त्रीहरू कम थिएनन्। प्रजापती गौतमी चिररात्रज्ञहरूमा अग्र थिइन्। खेमा महास्थविरनी प्रज्ञावान्हरूमा अग्र, उप्पलवण्णा महास्थविरनी ऋद्धिवान्हरूमा अग्र, र पटाचारा महास्थविरनी विनयधरहरूमा अग्र थिइन्। धर्मकथिकहरूमा अग्र धम्मदिन्ना महास्थविरनी तथा ध्यानीहरूमा अग्र नन्दा महास्थविरनी नै थिइन्। दिव्यचक्षु लाभीहरूमा अग्र सकुला महास्थविरनी थिइन्। भद्दा कुण्डलकेशा महास्थविरनी तुरुन्त अभिज्ञालाभीहरूमा अग्र थिइन्। पूर्वानुस्मृतिवान्हरूमा अग्रगण्या त भद्दा कापिलानी महास्थविरनी नै थिइन्। भद्दा-कच्चाना महास्थविरनी [illegible] लाभीहरूमा अग्र थिइन्। यी बाहेक समर्थ भिक्षुणीहरू [illegible] पनि बुद्ध-शासनमा धेरै थिए।

*समर्थ भिक्षुणीगण*

बुद्ध-शासनमा दाताहरूको पनि ठूलो महत्व थियो। साहू अनाथपिण्डकको दानकार्य्य महान् थियो। त्यस बेलाका सर्वश्रेष्ठ दानीहरूको नामावलीमा उनैको नामले प्रथम-स्थान प्राप्त गरेको थियो। त्यसकारण उनलाई दानी उपासकमा अग्र पनि भनिन्थ्यो। यिनी बाहेक उपासकहरूमा अरु पनि

*समर्थ उपासकहरू*

समर्थवान्हरु थिए। चित्तगृहपति उपासक धर्मकथिकहरुमा श्रेष्ठ थिए। चतुसंग्रह वस्तु उपकार गर्नेहरुमा अग्र हत्थालवक उपासक तथा प्रणीत दान गर्नेहरूमा अग्रमहानाम शाक्य थिए। वैशाली नगरमा बस्ने उग्ग गृहपति नामक उपासक प्रशस्त दान गर्नेहरुमा अग्रगण्य थिए। संघ उपस्थाकहरुमा अग्र उग्ग गृहपति तथा निश्चल प्रसन्न व्यक्तिहरुमा अग्र सूरबम्स्ठ थिए। व्यक्ति प्रसन्नहरुमा अग्र जीवक वैद्य र विश्वासीहरुमा अग्र नकुलपिता आदि धेरै समर्थवान् उपासकहरु थिए।

उपासिकाहरूमा पनि अग्रगण्या स्त्रीहरू कम थिएनन्। विशाखा महोपासिकालाई दानकार्यमा कसैले भेट्टाउन सकेका थिएनन्। खुज्जुत्तरा नामक उपाशिका बहुश्रतहरूमा श्रेष्ठ थिइन्। मैत्री साथीहरूमा महारानी श्यामावती र ध्यानीहरूमा राजगृहका सुमन नामक महाजनकी छोरी उत्तरा नै थिइन्। प्रणीत दानगर्नेहरुमा अग्र सुप्पवासा कोलिय राजकुमारी थिइन्। रोगी सेवा गर्नेहरुमा अग्र उपासिका सुप्पिया थिइन्। निश्चल प्रसन्नहरुमा कात्यायनी विश्वासीहरुमा अग्र नकुल माता, सुन्नु मात्रले प्रसन्न हुनेहरुमा अग्र कुररघर नामक देशमा रहेकी काली उपासिका थिइन्।

*समर्थ उपासिकाहरू*

यस प्रकारले भगवान् बुद्धको शासन तथा धर्म-विनयमा एक से एक समर्थवान् श्रेष्ठ भिक्षु तथा भिक्षुणी, उपासक तथा उपासिकाहरु भए।

## [ चतुर्थ खण्ड ]

### परिच्छेद सत्रौं

भगवान् बुद्धले शासनघर भिक्षु, भिक्षुणी, उपासक तथा उपासिकाहरु तयार पारी संसारमा शान्ति-धर्म प्रचार गरी जेतवन-विहारमा चवालीसौं वर्षावास बिताए। त्यहाँबाट पनि ठाउँ ठाउँमा धर्मोपदेश गर्दै राजगृहमा आई गृधकूट नामक पर्वतमा आएर आराम गरे।

*अपरिहानीय धर्मोपदेश*

त्यस बखतमा भगवान्‌को उमेर अस्सी-बर्ष पुगिसकेको थियो। राजा अजातशत्रुले वज्जीहरुसित युद्ध-घोषणा गर्ने कुरा सोचिरहेका थिए। भगवान् गृधकूट पर्वतमा आइपुगेका छन् भन्ने सुनेका अजातशत्रले वस्सकार नामक एकजना ब्राह्मणलाई

भगवान्कहाँ गई वज्जीहरूको कुरा बुझेर आऊ भनी पठाए। त्यो ब्राह्मण पनि भगवान् भए ठाउँमा गई सादर प्रणाम गरी एउटा आसन ग्रहण गरी बसे। भगवान्ले त्यस ब्राह्मणबाट अजातशत्रुको विचार-वृतान्त सुनिसकेपछि यस प्रकारले आज्ञा गरे— "ब्राह्मण! जबसम्म ती वज्जीहरूले मैले केही दिनअगाडि सारन्द चैत्यस्थानमा बताएका सातवटा अपरिहानीय धर्म[1] पालन गरीरहनेछन्, तबसम्म उनीहरूको परिहानी असम्भव छ, अर्थात् उनीहरूको कुनै प्रकारले हानी नोक्सानी हुनेछैन।"

यो कुरा सुनी वस्सकार ब्राह्मणले भने— "भगवन्! यी सातवटा नियममध्ये एउटाको मात्र पालन गरिरहे पनि कुनै प्रकारको हानी हुनेछैन भनेदेखिन्, सातैवटा नियम तिनीहरूले पालन गरिरहेका छन् भने अब भन्नु के बाँकी रह्यो र?"

१ अपरिहानीय धर्मः—

(१) आपसमा बराबर जम्मा भई एकत्रित हुनु। (२) सबै एकगोल भई मिल्नु, सबै एकैमतो भई उठ्नु (उन्नति गर्नु), सबै मिलेर काम गर्नु। (३) प्रज्ञप्त गरी नराखेकोलाई प्रज्ञप्त नगर्नु, प्रज्ञप्त गरिराखेकोलाई नबिगार्नु तथा प्रज्ञप्त गरिराखेको पुराना वज्जीहरूको धर्म (नीति) पालन गर्नु। (४) आफूभन्दा उमेरमा पाकाहरूको मान-सत्कार गर्नु तथा उनीहरूको आज्ञा मान्नु। (५) अन्यजनका स्त्रीहरूलाई तथा कन्याकुमारीहरूलाई बलात्कार गरी हरण नगर्नु। (६) आफ्ना पूज्यस्थानमा तथा पूज्यहरूलाई पहिलेदेखिन् दिएर आएको पूजादि दान दिनु। (७) अर्हत् आदि धार्मिक श्रमण ब्राह्मणहरूको राम्रोसित हेरबिचार गर्नु।" (दीघनिकाय)

यति भनी त्यो ब्राह्मण भगवान्‌लाई वन्दना प्रदक्षिणा गरी फर्के।

वस्सकार ब्राह्मण फर्किसकेपछि भगवान्‌ले आयुष्मान् आनन्दलाई भनी राजगृहमा रहेका सकल भिक्षुबन्धुहरुलाई त्यहाँ भेला गराए। सकल भिक्षुहरु जम्मा भइसकेपछि भगवान् सभागृहमा गई धर्मासनमा बसी यस्तो आज्ञा गरे— "भिक्षु-गण, जुन बेलासम्म तिमीहरुले यो सातवटा अपरिहानीय धर्म राम्रोसित पालन गरेर बसिरहने छौ, त्यस बेलासम्म तिमीहरू-को, वृद्धि ( उन्नति ) बाहेक, अवृद्धि तथा परिहानी हुनेछैन।

" ती सातवटा अपरिहानीय धर्म यी नै हुन्—

( १ ) भिक्षुहरु बराबर एकत्रित भई जम्मा हुनु।

( २ ) सबै एकत्रित भई भेला हुनु, सबै एकत्रित भई उठ्नु तथा सबै एकगठ भई काम-कारवाईमा लाग्नु।

( ३ ) तथागतले प्रज्ञप्त नगरेकोलाई प्रज्ञप्त नगर्नु, प्रज्ञप्त गरिराखेको शिक्षा नियमलाई नबिगार्नु, तथा प्रज्ञप्त गरिराखेका शिक्षा नियमको पालन गर्नु।

( ४ ) तृष्णाको वशमा नपर्नु।

( ५ ) आफूभन्दा उमेरमा पाको भिक्षुहरुको गौरवादि मानसत्कार गर्नु तथा उनीहरुले भने बमोजिम गर्नु।

( ६ ) जंगलवासको अभिलाषा गर्नु।

( ७ ) स्मृतिवान् भएर बस्नु, नआइसकेका शीलवान् सब्रह्मचारीहरुको सुखकामना गर्नु।

" यी बाहेक अरु पनि छवटा अपरिहानीय धर्म छन्—

( १ ) सब्रह्मचारीहरुउपर अगाडि पछाडि जहाँ तहीं कायिक मैत्रीभाव राख्नु।

( २ ) सब्रह्मचारीहरुउपर वाचिसिक मैत्रीभाव राख्नु।

( ३ ) सब्रह्मचारीहरुउपर मानसिक मैत्रीभाव राख्नु।

(४ ) धर्मपूर्वक लाभ भएको चतुप्रत्यय वस्तु सब्रह्मचारीहरुमा बाँडिदिनु।

( ५ ) सब्रह्मचारीहरुसित समानरूपले शील–पालन गर्नु।

( ६ ) सब्रह्मचारीहरुले जस्तै श्रेष्ठोत्तम सम्यक्दृष्टि राखी बस्नु।

यस प्रकारले भगवान्‌ले भिक्षुहरूलाई अनेक तरहले अपरिहानीय धर्मोपदेश गर्दै 'शील भनेको यस्तो हुनुपर्दछ, समाधी यस्तो हुनुपर्दछ, प्रज्ञा भनेको यस्तो हो। शीलको बृद्धि गर्दै लगेमा समाधीको फल महान् भएर आउँछ। समाधी बृद्धि गर्दै लगेमा प्रज्ञाको फल महान् भएर आउँछ र प्रज्ञा बृद्धि गर्दै लगेमा चित्त आस्रवबाट मुक्त हुन्छ।" भनी दयापूर्वक भिक्षुहरूलाई संझाइदिए।

त्यसको केही समयपछि भगवान् त्यहाँबाट राजगृह र नालन्दको बीचमा रहेको अम्बलट्ठिक नामक वनमा गए।

त्यहाँ पनि भगवान्‌ले अनेकविध शील, समाधी तथा प्रज्ञाको बारेमा भिक्षुहरुलाई उपदेश दिए। त्यहाँबाट भगवान् नालन्दमा पावारिकम्ब नामक वनमा गए। त्यहाँ पनि धर्मोपदेश गर्दै केही दिन बसी पाटलिग्रामतर्फ गए। त्यस ग्राममा रहेका उपासक उपासिकाहरुलाई अनेक प्रकारले धर्मोपदेश गरी तिनीहरूलाई स्वर्ग र मोक्षको बाटो देखाइदिए। त्यहाँबाट उनी कोटी नामक गाउँमा पुगे। त्यहाँ पनि आर्य्यशीलादिको बारेमा उपदेश दिई केही दिन त्यहीं आराम लिई नादिक नामक गाउँमा गए। त्यहाँबाट वैशाली नगरमा

पुगे। वैशाली नगरमा अम्बपालीको आम्रवनमा बसी भिक्षु-हरूलाई जम्मा गरी 'स्मृतिवान् भएर रहनु नै बुद्धहरूको अनुशासन हो' भनी सतिपट्ठानको उपदेश गरे। त्यहाँ केही दिन व्यतीत गरी धेरै भिक्षुहरू साथमा लिई त्यहाँबाट वेलुव नामक गाउँमा गए।

वेलुव-ग्राममा पुगेपछि अनेक प्रकारले भिक्षुहरूलाई उपदेश दिँदै शास्ताले यस्तो आज्ञा गरे,—"भिक्षुगण ! वर्षाकाल आइपुग्यो। अब तिमीहरू पनि आफ्ना आफ्ना मित्रहरूकहाँ, चिन्हेजानेकाहरू-कहाँ तथा विश्वासीहरूकहाँ गई वर्षावास गर्न जाऊ। म चाहिं यहीं वेलुव-ग्राममा नै वर्षावास गर्दछु।

*भगवान्को अन्तिम वर्षावास*

भगवान्को आज्ञा मानी सकल भिक्षुहरू वैशाली नग-रको चारैतिर वर्षावास गर्न गए। भगवान् बुद्ध त्यहीं वेलुवमा नै वर्षाकाल बिताउन बसे।

भगवान्को पैंतालीसौं तथा अन्तिम बर्षावास पनि यहीहो।

वर्षावास गरिरहेकै अवस्थामा शाक्यमुनि भगवान्लाई ठूलो रोग लाग्यो। उनले सकल पीडालाई ध्यानबलले सहिरहे। आखिरमा शारीरिक वेदनालाई ध्यान-बलले नै दमन गरी आफ्नै वीर्य्यबलले रोग निको पारे। त्यसपछि एकदिन विहारको पछिल्तिरको एउटा रूखमनि रहेको आसनमा बसिरहेका थिए। त्यही बेला त्यहाँ आयुष्मान् आनन्द आई भगवान् विरामी हुँदा आफ्नो मनमा उत्पन्न भएको दुःख र शोकका कुराहरू भगवान्लाई बताए। भगवानको

*बुद्ध-शासनमा गुरूमुष्टि छैन*

अन्तिम उपदेश तथा अववाद सुन्ने अभिलाषा उत्पन्न भएको कुराधनि भने। अनि महाकारूणिक त्रैलोकाचार्य्य भगवान्ले आनन्द स्थविरलाई आमन्त्रण गर्दै यस्तो आज्ञा गरे—

"आनन्द! अब मसित भिक्षुहरूले पाउनु पर्ने केही बाँकि रहेन। धर्मको विषयमा मसित गुरूमुष्टि भएको होइन*। मैले बताउनु पर्ने कुराहरू जम्मै बताइसकेको छु। अब मेरो उमेर पनि असी वर्षको भैसकेको छ। बूढो भैसकेको छु। मेरो शरीर जीर्ण भैसकेको छ। पुरानो थोत्रो गाडा जस्तो भैसकेको छु। त्यसो हो तापनि, आनन्द, जुन बेला तथागत (म) समापत्ति ध्यानमा बस्छन्, त्यस बेला उनको (मेरो) शरीरमा कुनै प्रकारको दुःखको अनुभव हुँदैन। तस्मात्, आनन्द! अनन्य शरण भई, आफ्नो द्वीप आफै भई, आफ्नो शरण पनि आफै भई बस्ने कोशिश गर। धर्म द्वीप, धर्म शरण भएर बस्ने यत्न गर। अन्य शरण भएर बस्ने प्रयत्न नगर!"

एकदिन बिहान सबेरै पात्र चीवर धारण गरी वैशाली नगरमा भिक्षाटन गरी भोजन गरिसकेपछि आनन्द स्थविरलाई साथमा लिई दिनको समय व्यतीत गर्न भगवान् चापाल नामक वनमा गए। त्यहाँ भगवान्ले आनन्द स्थविरलाई "आनन्द! इच्छा गरे भने तथागतहरू ऋद्धिबलद्वारा कल्पान्त-सम्म पनि बाँच्न सक्दछन्।" भनी तीन-तीन पटकसम्म आज्ञा गर्दा पनि आनन्द स्थविरले "त्यसोभए भन्ते! कल्पान्तसम्म रहनुहोस् त" भनी प्रार्थना गर्न सकेका होइनन्। त्यसपछि भगवान्ले "समयलाई बुझ" भनी आज्ञा गरेपछि आनन्द

* नत्थानन्द, तथागतस्स धम्मेसु आचरियमुट्ठि। —(दीघनिकाय)

स्थविरले भगवान्लाई बन्दना गरी त्यहींको एउटा रूखमनि गएर बसे ।

आनन्द गएको एकै छिनपछि वशवर्त्ती मार आई भगवान्लाई प्रार्थना गरे— "भन्ते ! चाँडै महापरिनिर्वाण हुनुहोस् !" यसरी आएर मारले भगवान्लाई यस्तो भनेको यसपटक मात्रै होइन। अगाडि पनि थुरै

*मारको प्रार्थना*

पटक मारले महापरिनिर्वाणको निंति प्रार्थना गर्न आएका थिए। त्यस बेला मारले भगवान्बाट यस प्रकारको उत्तर पाएका थिए— "हे मार ! जुन बेलासम्म मेरो शासनमा धर्म बुझेका, धर्मधर तथा शासनधर भिक्षु, भिक्षुणी, उपासक तथा उपासिकाहरू एक-से-एक समर्थवान् हुँदैनन्, त्यस बेलासम्म म परिनिर्वाण हुँदिन।"

त्यसकारण अब त्यो मार आई प्रार्थना गर्न थाले – "भन्ते ! तपाईंको शासनमा एक-से-एक समर्थवान् भिक्षु, भिक्षुणी, उपासक तथा उपासिकाहरू भैसके । अब चाँडै परिनिर्वाण हुनुहोस् ।"

त्यसपछि, मारको प्रार्थना पनि भएको तथा पहिले पनि उनलाई वचन दिइराखिसकेको हुनाले, फेरि कल्पान्तसम्म बस्नलाई पनि कसैले प्रार्थना नगरेको हुनाले, भगवान् तथागतले मारलाई आज्ञा गरे— "आजको तीनमहीनापछि तथागत (म) परिनिर्वाण हुनेछ ।" यस प्रकारले मारलाई महापरिनिर्वाण हुने वचन दिई भगवान्ले आयुसंस्कार छाडिदिए। त्यस बखतमा अति भयानक तरीकाले भूकंप भयो।

भूकम्प भएको देखी आनन्द स्थविर, के कारणले भूकम्प भयो भनी, भगवान् बसेको स्थानमा गई भूमिकम्पको कारण सोधे। भगवान्ले यसरी आज्ञा गरे - "आनन्द ! भूमिकम्प हुने कारण आठवटा छन्। के के भने,

*आनन्द स्थविरको प्रार्थना*

(१) यो महापृथ्वी पानीमाथि प्रतिस्थित भैरहेको छ। पानी हावामाथि प्रतिस्थित छ। हावा आकाशस्थ छ। त्यस्तो समय आउँछ, जुन समयमा बेस्सरी हूरी आई पानी चल्न थाल्दछ, पानी चलेपछि भूमिकम्प हुन थाल्दछ।

(२) ऋद्धिवान् श्रमण ब्राह्मण अथवा देवताहरूले पनि भूकम्प गराउन सक्दछन्।

(३) बोधिसत्व तुषित लोकबाट वर्ली स्मतिपूर्वक मातृगर्भमा प्रवेश गर्ने समयमा पनि भूकम्प हुन्छ।

(४) बोधिसत्त्व मातृगर्भबाट स्मृतिपूर्वक निस्कने समयमा पनि भूकम्प हुन्छ।

(५) तथागतलाई सम्यक्सम्बोधिज्ञान अवबोध हुने बेलामा पनि भूकम्प हुन्छ।

(६) तथागतले अनुत्तर धर्मचक्र चलाउने बखतमा पनि भूमिकम्प हुन्छ।

(७) तथागतले स्मृतिपूर्वक आफ्नो आयु संस्कार छोड्ने बखतमा पनि भूकम्प हुन्छ।

(८) तथागत अनुपादिशेष महापरिनिर्वाण हुने बखतमा पनि भूकम्प हुन्छ।

आनन्द, यी आठ कारणले लोकमा भूकंप हुन्छ। यीमध्ये यो चाहिं भूकंप तथागतले (मैले) आफ्नो आयु संस्कार

स्मृतिपूर्वक छोडेकोले भएको हो । आजको तीन महीनापछि मेरो परिनिर्वाण हुनेछ ।"

भगवान्‌को यस्तो कुरा सुनी आनन्द स्थविरले भगवान्‌लाई कल्पान्तसम्म रहनुहोस् भनी प्रार्थना गरे। अब पछि परिसक्यो भनी भगवान्‌ले स्वीकार गरेनन् । आनन्द स्थविरले अश्रुमुखी भई दुःख मानेको देखी भगवान्‌ले उनलाई अनेक प्रकारले संयोग र वियोगको उपदेश दिई बोध गराए ।

तद्‌उपरान्त भगवान् कुटागार शालामा गई आनन्द स्थविरलाई भनी वैशाली नगरमा रहेका सकल भिक्षुहरूलाई जम्मा गराउन लगाए। अनि तिनीहरूलाई आफूले अवबोध गरिराखेको चारवटा सतिपट्ठान, सम्यग्प्रधान, चारवटा ऋद्धिपाद, पञ्चेन्द्रिय, पञ्चबल, सप्तबोध्यङ्ग तथा आर्य्याष्टाङ्गिक मार्गादि ज्ञान–गुण–धर्मको उपदेश दिंदै भगवान्‌ले भने— "भिक्षुगण ! संस्कार भनेको चीज नित्य कहिल्यै हुंदैन । यसको स्वभावै विनाश तथा अनित्य हुनु हो। त्यसकारण, भिक्षुगण, तिमीहरू अप्रमादी होऊ, कुनै कुरामा नभूली गुण धर्म संपादन गर्दै आफ्नो जीवन सुधार्ने कोशिश गर ! आजको तीन महीनापछि तथागतको ( मेरो ) परिनिर्वाण हुनेछ ।"

यस्तो अववाद दिइसकेपछि भगवान्‌ले फेरि आज्ञा गरे— "म बूढो भैसकेको छु । मेरो आयु पनि अब धेरै छैन । तिमीहरूसित छुट्टिने बेला नजीकै आइसकेको छ । प्रमादलाई छाडी तिमीहरू शीलवान् होऊ, स्मृतिवान् होऊ । सुसमाहित भई चित्तको रक्षा गर्ने प्रयत्न गर । जसले अप्रमादी भई

विनय-धर्ममा लागी जन्म मरणको दुःखबाट छुटकारा पाउछ, त्यही यस संसारको दुःखको बन्धनबाट मुक्त हुन्छ।*"

---

* "परिपक्को वयो मय्हं परित्तं मम जीवितं।
पहाय वो गमिस्सामि कतम्मे सरणमत्तनो ॥
अप्पमत्तो सतिमन्तो सुसीला होथ भिक्खवे।
सुसमाहितसङ्कप्पो सचित्तमनुरक्खथ ॥
यो इमस्मिं धम्म विनये अप्पमत्तो विहेस्सति।
पहाय जातिसंसार दुक्खस्सन्तं करिस्सति ॥ (दीघनिकाय)

## परिच्छेद अठ्ठारौं

भगवान् बुद्ध परिनिर्वाण भएर जाने भए भन्ने समाचार भिक्षुणी-आश्रममा पनि पुग्यो। यो खबर सुनेका प्रजापती गौतमी हत्तपत्त दौड्दै गई आफू पनि परिनिर्वाण हुने इच्छा भगवान्‌को समक्ष प्रकट गरिन्। भगवान्‌ले यिनी पनि अब एकसय बीस वर्ष पुगिहालिन् भनी परिनिर्वाणको वचन दिए। अनि महास्थविरनी गौतमी अनेक ऋद्धि प्रातिहार्य्य देखाउँदै परिनिर्वाण भएर गइन्। त्यसपछि महास्थविरनी यशोधरा देवी पनि अपराध क्षमा मागी भगवान्‌को वचन लिई नाना प्रकारले ऋद्धि प्रातिहार्य्य देखाउँदै परिनिर्वाण भएर गइन्।

*प्रजापती गौतमी र यशोधरा देवीको परिनिर्वाण*

एकदिन, बिहान सबेरै देवाधिदेव शाक्यमुनीन्द्र भगवान् बुद्ध पात्र चीवर धारण गरी वैशाली नगरमा भिक्षाटन गर्न गए। त्यस बेला आनन्द स्थविरलाई 'यो तथागतको अन्तिम अवलोक हो' भनी आज्ञा गरी नगर अवलोकन गर्दै भण्ड नामक गाउँमा पनि गए। त्यहाँबाट भोग नामक नगरमा आनन्द-चैत्यस्थानमा गए। त्यहाँ भिक्षुगणहरूलाई भेला गरी यस्तो आज्ञा गरे— "भिक्षुगण! कुनै भिक्षुले पनि 'यो तथागतको धर्म हो, यो तथागतको विनय हो, यो मैले तथागतबाट सुनेकोहु" भन्दैमा तिमीहरूले त्यसलाई तुरुन्त प्रशंसा अथवा निन्दा

*तथागतको धर्म भन्दैमा स्वीकार नगर्नू*

नगर्नू । पहिले त्यस कुरालाई सूत्रविनयादि धर्ममा मिलाई हेनू, यदि मिल्ने रहेछ भने 'यो निश्चय पनि तथागतको धर्म तथा उपदेश हो' भनी स्वीकार गर्नू । यदि मिल्ने रहेनछ भने 'निश्चय पनि यो तथागतको उपदेश होइन' भनी त्यसलाई त्यागिदिनू !

" त्यस्तै, फलानो स्थानमा बस्ने महासंघले भनेका, फलानो स्थानमा बस्ने धर्मधर स्थविरहरूले भनेका, फलानो स्थानमा बस्ने विनयधरहरूले भनेका भनी जिद्दी गरे तापनि तुरन्तै त्यस कुरालाई प्रशंसा अथवा निन्दा नगरी त्यस कुरा तथा उपदेशलाई सूत्रविनयादि धर्ममा मिलाउँदा मिल्दछ भने 'निश्चय पनि यो तथागतको धर्म हो, विनय हो' भनी स्वीकार गरी ग्रहण गर्नू, यदि मिल्दैन भने 'यो त तथागतको धर्म होइन, विनय होइन' भनी त्याग गर्नू !"

भगवान् बुद्ध केही दिन त्यहीं बसी भिक्षुहरूलाई शील समाधि तथा प्रज्ञाको उपदेश दिइरहे । त्यसपछि पावा नामक नगरतर्फ प्रस्थान गरे । त्यहाँ उनी चुन्द नामक नकर्मी-पुत्रको आम्रवनमा गएर बसे । भगवान् बुद्ध त्यहाँ आएका छन् भन्ने खबर सुनी चुन्द-नकर्मीपुत्रले भगवान् प्रमुख सकल भिक्षु संघलाई प्रणीताकारपूर्वक भोजनदान दिए। भगवान्को अन्तिम भोजन यही थियो।

*भगवान्को अन्तिम भोजन*

त्यस आम्रवनबाट पनि भगवान् ककुध नामक नदीको तिरमा पुगी स्नान गरे ! त्यहाँबाट पनि हिरण्यनदी पारी स्थित कुशीनगरमा पुगे। त्यहाँ मल्ल राजाहरूका उपवर्तन नामक शालोद्यान एउटा थियो । त्यस उद्यानमा दुइटा

शाल–वृक्षको बीचमा, आनन्द स्थविरलाई भनी, एउटा आसन बनाउन लगाए। त्यस आसनमा, उत्तरतर्फ सिरान गरी, भगवान् सिंहशैय्या गरी शयन गरे।

त्यस मुहूर्तमा ब्रह्मादि अनेक देवगणले भगवान् बुद्धलाई सुगन्धयुक्त पुष्प तथा दिव्यअत्तरद्वारा पूजा गर्न आए।

आनन्द स्थविरलाई डाकी भगवान्ले यस्तो आज्ञा गरे—“आनन्द ! सुगन्धयुक्त दिव्य पुष्प धूपादिले पूजा गर्दैमा तथागतलाई सत्कार, गौरव, मान तथा पूजा गरेको ठहरिंदैन। आनन्द ! जुन भिक्षु अथवा भिक्षुणीले तथा उपासक अथवा उपासिकाले धर्मलाई आदर राखी, तदनुसार अभ्यास गरी धर्माचरण गर्दछ, त्यसले तथागतलाई सत्कार गरेको, मान गरेको, गौरव गरेको तथा परमोत्तम पूजा सामाग्रीले पूजा गरेको ठहर्दछ।’

त्यस समयमा अर्थात् भगवान्को अन्त्यावस्थामा त्यहाँ महाब्रम्हादि अनेक देवगण जम्मा भैरहेका थिए। तिनीहरूमध्ये कोही भगवान्को अन्त्य आइपुग्यो भनी नाना तरहले विलाप गरिरहेका थिए। आर्य्यज्ञान लाभी कोही देवताहरू ‘सकल संस्कार अनित्य हो. संस्कारित वस्तु सदा नित्य भएर रहंदैन !’ भनी धर्मसंवेग प्राप्त गरेर बसिरहेका थिए।

*दर्शनीय चार स्थान*

त्यस अन्त्य अवस्थामा भगवान्ले आनन्द स्थविरलाई भने—“आनन्द ! यी चारवटा स्थान— बुद्ध जन्मेको स्थान लुम्बिनी, बुद्धत्व प्राप्त गरेको स्थान बुद्धगया, धर्मचक्र चलाएको स्थान ऋषिपतन (सारनाथ), महापरिनिर्वाण भएको

स्थान कुशीनगर — दर्शनीय छन्। ती स्थानहरूको दर्शनले श्रद्धालु जनलाई संवेग उत्पन्न भई श्रद्धा र शक्ति लाभ भई अति पुण्य प्राप्त हुनेछ।"

*स्त्रीहरूसितको व्यवहार*

त्यसै बेला आनन्द महास्थविरले स्त्रीहरूसित कस्तो व्यवहार गर्नु पर्छ भनी बिन्ती गरे। मुख नहेर्नु, मुख हेर्नु पर्ने अवस्थामा कुरा नगर्नु, कुरा गर्नु पर्ने अवस्थामा स्मृतिलाई सम्हाली होश राखेर बस्नु भनी भगवान्ले उत्तर दिए।

*स्तूप बनाउन योग्य अस्थिधातु*

भगवान्ले फेरि आनन्द स्थविरलाई सम्बोधन गर्दै आज्ञा गरे— "आनन्द! स्तूप बनाउन योग्य अस्थिधातु चारवटा छन्— तथागतहरूका अस्थिधातु स्तूप बनाउन योग्य छन्, प्रत्येक बुद्धहरूका अस्थिधातु स्तूप बनाउन योग्य छन्, अर्हत्हरूका अस्थि-धातु स्तूप बनाउन योग्य छन्, चक्रवर्ती राजाहरूका अस्थिधातु स्तूप बनाउन योग्य छन्। यी चार प्रकारका अस्थिधातु स्तूप बनाउन योग्य छन्। जुन स्तूपहरू देखेर 'यो तथागतको स्तूप हो, यो बुद्धको स्तूप हो, यो अर्हत्को स्तूप हो, यो चक्रवर्ती राजाको स्तूप हो' भनी श्रद्धालु व्यक्तिहरूले आफ्नो चित्तलाई प्रसन्न पारी श्रद्धा भक्ति उत्पन्न गरी कुशल चेतना प्राप्त गरी पुण्यलाभ गर्न सक्छन्।"

आनन्द स्थविर भगवान् परिनिर्वाण भएर जान आँटे भनी साह्रै दुःखित हुँदै दुवै हात आफ्नो टाउकोमा राखी एकटा कुनामा गई रोईरहे। यो देखेर आनन्द स्थविरलाई डाकी भगवान्ले धर्मोपदेश गरे — "आनन्द न रोऊ,

*आनन्द स्थविरको विलाप*

धैर्य गर ! जुनसुकै वस्तु पनि एकदिन विनाश भई वियोग हुन्छ भनी मैले तिमीलाई भनेको थिइन ? यस संसारका प्राणीहरू सबैले एकदिन मर्नै पर्दछ। संसारै अनित्य छ भनी तिमीले कसरी नबुझेको ? रूने किन, धैर्य राख ! तिमी सार्है भाग्यमानी छौ, भगवान्‌को उपस्थाक हौ, दीर्घकालसम्म भगवान्‌को मनलाई सन्तोष पारी सेवा गरेका छौ ! तिमी पनि दुःखबाट चाँडै मुक्त हुनेछौ।"

त्यस समयमा कुशीनगरमा सुभद्र नाम गरेका एकजना परिव्राजक थिए। भगवान् आजै परिनिर्वाण भएर जान् आँटे भन्ने खबर सुनी ' बुद्ध भनेका अत्यन्त दुर्लभ हुन्छन् भनी मेरा गुरुजनहरु भन्दछन् ' भनी दौड्दै भगवान् भएको स्थानमा गए। तर, आनन्द स्थविरले अन्तिम बेलामा कष्ट दिनु उचित पर्दन भनी त्यस सुभद्रलाई भगवान्‌सित भेट्न दिएनन्।

अनि भगवान्‌ले यो कुरा थाह पाई आनन्द स्थविरलाई डाकी यस्तो आज्ञा गरे— "आनन्द ! संसारमा बुद्ध भनेका दुर्लभ हुन्छन्। त्यस्ता दुर्लभ बुद्धको दर्शन गर्ने, तथा उनीसित कुरा गर्ने समय अहिलेकति मात्रै बाँकी छ। केही समयपछि तथागतको दर्शन पाइने छैन।

*अन्तिम श्रावक*

त्यसकारण सुभद्रलाई यहाँ पठाऊ। उनी भगवान्‌लाई कष्ट दिने नियतले आएका होइनन्, धर्म बुझ्न भनी आएका हुन्।"

भगवान्‌को आज्ञा सुनी आनन्द स्थविरले उनलाई भगवान्‌कहाँ लगिदिए। उनी पनि भगवान्‌लाई सादर प्रणाम गरी अगिल्तिर बसे। अनि उनले यसरी प्रश्न गरे—" भन्ते !

सबैले आफ्नो सम्प्रदाय श्रेष्ठ भनी भन्दछन्। यो कुरा ठीक हो कि बेठीक ?"

भगवान्‌ले भने –"सुभद्र ! तिम्रो यो प्रश्नको जवाफ दिने बेला यो होइन। तर, तिमीलाई म धर्मोपदेश गर्दछु, सुन।"

यति भनी भगवान् बुद्धले निम्न उपदेश दिए.

"सुभद्र ! जुन धर्मविनयमा आर्य्याष्टांगिक मार्ग छैन, त्यस धर्मविनयमा श्रमणहरू पनि हुंदैनन्। जुन धर्मविनयमा अर्य्याष्टांगिक मार्ग हुन्छ, त्यस धर्मविनयमा श्रमणहरू पनि हुन्छन्। सुभद्र ! भिक्षुहरूले राम्ररी धर्माचरण गरेर बसे भने यस लोकमा अर्हत्‌हरू बिलाउने छैनन् ।"

यो धर्मोपदेश सुनी सुभद्र परिव्राजक अर्हत् भए। अर्हत् भैसकेपछि भगवान्‌सित प्रव्रज्या र उपसम्पदा मागिलिई भगवान्‌सितै परिनिर्वाण भएर गए ! भगवान्‌को अन्तिम श्रावक तथा भगवान्‌सितै परिनिर्वाण भएर जाने श्रावक यी आयुष्मान् सुभद्र हुन्।

सुभद्रलाई उपदेश दिइसकेपछि भगवान्‌ले आनन्द स्थविरलाई डाकी यस्तो आज्ञा गरे—"आनन्द ! निर्वाण भैसकेपछि तिमीहरूको मनमा 'अब उपदेश दिने गुरु भएन, अब हाम्रा शास्ता छैनन्' भन्ने भावना पर्न सक्दछ। तर आनन्द, त्यस्तो मनमा लिनु हुन्न।

धर्म नै शास्ता हुन्

*आनन्द ! जुन धर्म र विनय मैले तिमीहरूलाई देशना गरी प्रज्ञप्ति गरिराखेको छु, त्यही धर्म र विनय, म नभैसकेपछि, तिमीहरूको शास्ता हुनेछन्।"*

भगवान्‌ले फेरि भने — " आनन्द ! आजकल जसरी भिक्षुहरू परस्पर आपसमा कुरा गर्दा 'आवुसो' भनी संबोधन गर्छन्, म नभएपछि त्यसरी नै संबोधन गरी कुरा नगर्नू । त्यस बेला आफूभन्दा ठूलालाई 'आयुष्मान्' अथवा 'भन्ते' भनी संबोधन गर्नू र आफूभन्दा सानालाई 'आवुसो' भन्नू ! भिक्षुहरूको मनमा कुनै कुराको शंदेह बाँकी छ भने अहिलेसम्म समय छ, तथागतसित सोध्नू ! "

त्यस समयमा त्यहाँ उपस्थित त्यतिका भिक्षुहरूमध्ये कसैको मनमा पनि बुद्ध, धर्म, संघ तथा शिक्षाको बारेमा कुनै प्रकारको शंदेह नरहेको हुनाले महास्थविर आनन्दले भगवान्‌लाई बिन्ति गरे— " भगवन् ! यस परिषद्‌मा शंका भएका भिक्षुहरू कोही छैनन्, सबै सुप्रसन्न छन् । "

*अन्तिम उपदेश*

अनि भगवान्‌ले भिक्षुहरूलाई संबोधन गरी भने— " भिक्षुगण ! संस्कार जम्मै अनित्य भन्ने बुझी अप्रमादी भई रात्ररी स्मृति राखी गुण–धर्म संपादन गरिलिने प्रयत्न गर !" भगवान् बुद्धको यही वाक्य अन्तिम उपदेश भयो ।

तदनन्तर भगवान् प्रथम ध्यानमा बसे । त्यसपछि क्रमैसित द्वितीय ध्यानमा, तृतीय ध्यानमा, तथा चतुर्थ ध्यानमा बसे । चतुर्थ ध्यानपछि आकाशानन्त्यायतन भन्ने अरुपी ध्यानमा बसे । त्यसपछि अकिञ्चन्यायतन भन्ने अरुपी ध्यानमा बसे । अनि नैवसंज्ञाना-संज्ञायतन नामक अरुपी ध्यानमा बसे । त्यसपछि निरोधसमापत्तिमा बसे । तदनन्तर, फेरि क्रमैसित प्रथम ध्यानसम्म वर्ले । फेरि, प्रथम ध्यानबाट क्रमैसित

*महापरिनिर्वाण*

चतुर्थ ध्यानसम्म पुगे। अनि त्यस ध्यानबाटै महापरिनिर्वाण भए।

यस प्रकारले, महाकारुणिक तथागत सम्यग्सम्बुद्ध अस्सी-वर्ष संपूर्ण भएकै दिन, वैशाख-पूर्णिमाको रात्रीको तृतीय प्रहरमा, सकल संस्कारको अनित्य भाव देखाई, आफू स्वयं निदर्शन भई, अनुपादिशेष महापरिनिर्वाण भएर गए। त्यस बखतमा त्यहाँ अति भयानक महाभूकंप पनि भएको थियो।



[ पञ्चम खण्ड ]

## परिच्छेद उन्नाइसौं

आयुष्मान अनुरुद्धले, आयुष्मान् आनन्दको आज्ञा लिई, कुशीनगरका राजाहरूकहाँ भगवान् परिनिर्वाण भएको समाचार भन्न पठाए। तिनीहरू सबै त्यहाँ उपस्थित भई, नगर सबै ध्वजा पताकादिले सिंगारी, तूर्यनाद

आदहनोत्सव

गराउनलगाई भगवान्को मृतदेह नगरभरि घुमाई, जात्रा गरी, नाना सुगन्धित धूप पुष्पादिले पूजा गरी सातदिनसम्म आदहनोत्सव मनाइरहे त्यसपछि भगवान्का मृतदेह नगरको पूर्व ढोकाबाट नगरबाहिर ल्याई मुकुटबन्धन भन्ने, मल्लराजाहरूको पूजनीय, स्थानमा

ल्याए त्यहाँ चिता बनाई चक्रवर्ती राजाहरूको मृतदेहलाई झैं सय्यौं थान सेतो कपडाले, भगवानको मृतदेहलाई. बेरी चितामा राखे।

त्यसै बेला महाकाश्यप महास्थविर पाँचसय भिक्षुगण-सहित कुशीनगरबाट पावा नगरतिर आउँदैरहेका थिए। एउटा रूखमनि विश्राम गरिरहेका बखतमा आजीवक एकजना बाटोमा आउँदैरहेको देखी महाकाश्यपले उनीसित सोधे—

*महाकाश्यप स्थविरको कुशीनगर गमन*

" आवुसो ! तथागतलाई चिन्हेका छौ ? चिन्हेका छौ भने अचेल वहाँ कहाँ रहनु भएको छ, थाहा छ ? "

" तथागतलाई मैले चिन्हेको छु। वहाँ मल्लराजाहरूको शालोद्यानमा परिनिर्वाण हुनु भएको आज सातदिन भैसक्यो। म त्यहीं आदहनोत्सव हेरेर देवताहरूले वृष्टि गरेको फूल एउटा पनि लिएर आएको छु। " भनी आफ्नो हातमा भएको मन्दार फूल देखाए। यो कुरा सुन्नासाथ आस्रव क्षय नभैसकेका भिक्षु-हरू त्यहीं बाटोमा मूर्छित हुँदै रून थाले। आस्रव क्षय भैसकेका भिक्षुहरू ' सकल संस्कार अनित्य हो ' भनी धर्म विनय संझेर त्यसै बसिरहे।

उता कुशीनगर–मुकुटबन्धन स्थानमा मल्ल राजाहरू सबै मिली चितामा अग्नि हाले। तर आगो बलेन। अनेक उपाय गर्दा पनि चितामा आगो बाल्नै सकेनन्। सकल नरना-रीले आश्चर्य अद्भुत माने। सबै गएर आयुष्मान् अनुरुद्धसित यसको कारण सोधे। आयुष्मान् महाकाश्यप आइरहेका छन्, उनी आएर भगवान्को श्रीचरणमा

*चितामा अग्नि बलेन*

शीरले वन्दना नगरेसम्म आगो बल्दैन भनी आयुष्मान् अनुरु-द्धले जवाफ दिए।

महाकाश्यप महास्थविर पनि भिक्षुसंघ सहित त्यहाँ आइपुगे। भगवान्को मृतशरीरलाई तीनपल्ट परिक्रमा गरी शिरसा वन्दना गरे। भिक्षुसंघले पनि वन्दना गरे। तिनीहरूले वन्दना गर्न मात्रै के सिध्याएका थिए, चितामा आफसेआफ आगो बलेर आयो। अनि भगवान्को अधिष्ठानानुसार

*धातु-पूजा*

चारवटा दन्त धातु, कपाल धातु तथा दुइवटा अक्ख धातु बाहेक अ सबै अस्थि, 'रायो,—' को गेडा जत्रा, 'कनिका' जत्रा, र 'मूगी' जत्राको रूपले गोल-गोल आकारका भएर गए। योभन्दा आश्चर्यको कुरो त यो भयो कि भगवान्को मृतदेह बेरी राखेका सय्यौं थान कपडामा सबभन्दा भित्रपट्टिको एक तह र सबभन्दा बाहिरपट्टिको एक तह कपडा ज्यूँ का त्यूँ रह्यो, आगोले छोएन। यस प्रकारले शारीरिक धातु जम्मै गोलगोल गेडो भएर गैसकेपछि आकाशबाट सुगन्ध जलको वृष्टि भई चिताको आगो जम्मै निभ्यो।

---

आचार्य भैरहेका द्रोण नामक ब्राह्मणले 'यसरी झगडा गर्नु उचित भएन' भन्ने मनमा लिई त्यहाँ उपस्थित सकल जनको अगाडि यस्तो भाषण गरे- "भो वीर क्षत्रियजन! जुन अनुत्तर सम्यग्सम्बुद्ध भगवान्‌ले सत्वकरूणाको धर्मोपदेश दिएर जानुभो, उनै भगवान् शाक्यमुनिको शारीरिक अस्थि-धातुको कारणमा, अमानुषिक तरीकाले परस्पर शस्त्र प्रहार गरी रगतको खोलो बगाई लडाईं गर्नु कदाचित् राम्रो काम होइन। अहिंसाका पूजारीको अस्थिधातु सबैलाई भागशान्ति बाँडेर लिनु नै उचित होला। यसो गरेमा सकल जनलाई पुण्य पनि प्राप्त हुनेछ। त्यसकारण यो आठ देशको निति आठ भाग लाऔं।"

आचार्य्य द्रोणले यति घोषणा गरी सबैले सुन्ने गरी यो श्लोक पढेर सुनाए —

सुणन्तु भोन्तो मम एक वाक्यं,
अह्माक बुद्ध अहु खन्तिवादी।
नहि साधुयं उत्तम पुग्गलस्स,
सरीर भागे सिया सम्प्रहारो॥
सब्बेव भोन्तो सहिता समग्गा,
सम्मोद माना करोमट्ठ भागे।
वित्थारिका होन्तु दिसासु थूपा,
बहुज्जनो चक्खुमतो पसन्ना॥ (दी०)

(भावार्थ: सज्जनहरू हो! हाम्रा यी बुद्ध शान्तिवादी हुन्। उनै शान्तिवादी तथा अहिंसावादी भगवान्‌को धातुको निति आपसमा झगडा गर्नु मनुष्योचित काम होइन। बरू

हामी सबै मिली भागशान्ति गरी बाडौं, जम्मा आठभाग हुने छन्। यसो गरेको खण्डमा संसारका धेरै भागमा चैत्य बन्ने छन्, र अनि ती चैत्यहरूको दर्शन गरी सकल मनुष्य प्रसन्न ( सुखी ) हुने छन्। )

द्रोणाचार्य्यको यस्तो न्याययुक्त तथा धर्मयुक्त कुरा सुनी त्यहाँ उपस्थित सकल जनको चित्त बुभ्र्यो ! अनि अस्थि-धातु आठ भाग गरियो। भाग लाउने

*धातु–विभाग*

द्रोण आचार्य्यले दन्त–धातु एउटा कसैले नदेख्ने गरी आफ्नो पगरीमा लुकाए। यो देखेका शक्रदेवेन्द्रले देवानुभावले त्यो लुकाइराखेको धातु लिएर देवलोकमा पुऱ्याए। त्यहाँ अत्यन्त भक्त्यादरले पूजा सत्कार गरी राखिछाडे। भाग लाइसकेपछि द्रोण ब्राह्मणले आफ्नो पगरीको दन्त–धातु खोज्दा नपाई मनमा साह्रै पीर माने। तर, कसैलाई केही भन्न नसकी, मल्ल राजाहरूसित अस्थिधातु भरिदिएको 'कुम्भ' ( मानो ) एउटा मागेर लिए।

पिप्पलिवन नामक देशका मोरिय ( मौर्य्य)हरू पनि भगवान् परिनिर्माण भए भन्ने समाचार सुनी अस्थिधातु माग्न कुशीनगर पुगे। अस्थिधातु बाँडिसकेको र सिद्धिसकेको हुनाले भगवान्को चिपमा गई, त्यहाँ बाँकिरहेको, गोल तथा खरानी लिएर फर्के।

भगवान्को अस्थिधातु लिएर गएका सबैले आफ्ना आफ्ना देशमा ती धातु राखी चैत्य बनाए! द्रोण आचार्य्यले पनि मानो ( कुम्भ ) राखेर चैत्य बनाए। यस प्रका-

दस चैत्य

रले भगवान्‌को शारीरिक धातु भएको चैत्य आठवटा, धातु भरिदिएको मानो भएको चैत्य एउटा, र दिपको गोल (खरानी) भएको चैत्य एउटा— जम्मा दसवटा चैत्य यस लोकमा खड़ा भए। ती चैत्यलाई मान, सत्कार, तथा गौरवादर राखी पूजा गरी पुण्य लाभ गर्दै लख्खौं—करोडौं मनुष्यहरू सुगति प्राप्त गरी स्वर्गलोगमा उत्पन्न हुन गए।

---

*भिक्षु अमृतानन्द स्थविर द्वारा प्रणीत तथा केशवलाल कर्माचार्यद्वारा अनवादित*

## "बुद्ध-जीवनी"

*समाप्त।*

सिद्धिरस्तु !

